**॥ श्री गणेशाय नमः ॥**

**ॐ**

**श्री परमात्मने नमः**

**॥ अथ संवर्त्तस्मृतिः ॥**

**संवर्त्तमेकमासीनमात्मविद्यापरायणम् ।**
**ऋषयस्तमुपागम्य पप्रच्छुर्धर्मकाङ्क्षिण ॥१॥**

एकान्तमा बस्नु भएका आत्मविद्याका खानी ती संवर्त्तका
नजिक आई धर्म चाहने भएका ऋषिहरुले सोधे ।

**भगवन् ! श्रोतुमिच्छामः श्रेयस्कर्म द्विजोत्तम ! ।**
**यथावद्धर्ममाचक्ष्व शुभाशुभविवेचनम् ॥२॥**

हे भगवान् ! हे कल्याणकारी कर्म गर्ने भएका हजूर ! हे द्विजश्रेष्ठ ! हामी उत्तम कर्म सुन्न
इच्छुक छौं । यसैले हामीलाई शुभ एवं अशुभको विवेक
सिकाउने धर्मलाई राम्ररी उपदेश दिनु होस् ।

**वामदेवायः सर्वे तमपृच्छन् महौजसम् ।**
**तानब्रवीन्मुनीन् सर्वान् प्रीतात्मा श्रूयतामिति ॥३॥**

यसरी वामदेव आदि गरिएका सबै ऋषिहरूले महान् तेजस्वी ती संवर्त्तसँग प्रश्न गरेपछि प्रसन्न
चित्त भएका संवर्त्तले ती सबै मुनिहरूलाई सम्बोधन गर्दै लौ सुन
भनी धर्मको उपदेश दिन लाग्नु भयो ।

**स्वभावाद् यत्र विचरेद् कृष्णसारः सदा मृगः ।**
**धर्म्यदेशः स विज्ञेयो द्विजानां धर्मसाधनम् ॥४॥**

कृष्णसार मृग जहाँ स्वतन्त्रतापूर्वक विचरण गर्दछन्,
त्यसैलाई द्विजको धर्मसिद्धि गर्ने धर्मक्षेत्र सम्झनू ।

**उपनीतः सदा विप्रो गुरोस्तु हितमाचरेत् ।**
**स्रग्गन्धमधुमांसानि ब्रह्मचारी विवर्जयेत् ॥५॥**

उपनयन गरेको ब्राह्मण ब्रह्मचारीले सधैँ गुरुको भलो गर्नू तथा माला,
चन्दन आदि सुगन्ध, मह र मासुलाई त्याग्नू ।

**सन्ध्यां प्रातः सनक्षत्रामुपासीत यथाविधि ।**
**सादित्यां पश्चिमां सन्ध्यामर्द्धास्तमितभास्करे ॥६॥**

ब्रह्मचारीले बिहान तारा नअस्ताएसम्म र बेलुकी आधा सूर्य
अस्त नभएसम्म विधिले उपासना गर्नू ।

**तिष्ठन् पूर्वां जपं कुर्य्याद् ब्रह्मचारी समाहितः ।**
**आसीनः पश्चिमां सन्ध्यां जपं कुर्य्यादतन्द्रितः ॥७॥**

ब्रह्मचारीले बिहान उठीउठी ध्यान गर्दै र बेलुकी बसेर अल्छी नगरी गायत्री जप गर्नू ।

**अग्निकार्य्यं ततः कुर्य्यान्मेधावी तदनन्तरम् ।**
**ततोऽधीयीत वेदन्तु वीक्षमाणो गुरोर्मुखम् ॥८॥**

चलाख ब्रह्मचारीले जपपछि दुवै सन्ध्यामा होम गर्नू र होमपछि गुरुको सामुन्ने वेद पढ्नू ।

**प्रणवं प्राक् प्रयुञ्जीत व्याहृतिं तदनन्तरम् ।**
**गायत्रीञ्चानुपूर्वेण ततो वेदं समारभेत् ॥९॥**

पहिले ॐ, त्यसपछि व्याहृति अनि गायत्री जपेर मात्र वेदको अध्ययन शुरु गर्नू ।

**हस्तौ सुसंयतौ कार्य्यौ जानुध्यामुपरिस्थितौ ।**
**गुरोरनुमतं कुर्य्यात् पठन्नान्यमतिर्भवेत् ॥१०॥**

वेदको अध्ययन गर्दा दुवै हातलाई घुँडा माथि राखेर, गुरुको
अनुमतिले मन स्थिर गरी अध्ययन गर्नू ।

**सायं प्रातस्तु भिक्षेत ब्रह्मचारी सदा व्रती ।**
**निवेद्य गुरवेऽश्नीयात् प्राङ्मुखो वाग्यतः शुचिः ॥११॥**

ब्रह्मचारीले बिहानबेलुकी भिक्षा माग्नू । भिक्षा गुरुलाई अर्पी नुहाई पूर्व फर्की शान्त भई खानू ।

**सायं प्रातर्द्विजातीनामशनं श्रुतिचोदितम् ।**
**नान्तरा भोजनं कुर्य्यादग्निहोत्रसमो विधिः ॥१२॥**

द्विजातिले बिहानबेलुकी भोजन गर्ने विधान वेदमा छ, अग्निहोत्रीले बीचमा भोजन नगर्नू ।

**आचम्यैव तु भुञ्जीत भुक्त्वा चोपस्पृशेद् द्विजः ।**
**अनाचान्तस्तु योऽश्नीयात् प्रायश्चित्तीयते तु सः ॥१३॥**

द्विजातिले आचमन गरेर खानू र खाएपछि मुख सफा गर्नू,
मुख सफा नगरी खानेले प्रायश्चित गर्नु पर्दछ ।

**अनाचान्तः पिबेद् यस्तु योऽपि वा भक्षयेद् द्विजः ।**
**गायत्र्यष्टसहस्रन्तु जपं कृत्वा विशुध्यति ॥१४॥**

द्विजातिले आचमन नगरी पानी पिए वा खाना खाए उ आठ हजार
गायत्री जप गरेपछि पूर्ण शुद्ध हुन्छ ।

**अकृत्वा पादशौचन्तु तिष्ठन् मुक्तशिखोऽपि वा ।**
**विना यज्ञोपवीतेन आचान्तोऽथ शुचिर्द्विजः ॥१५॥**

गोडा नधोई, उभिएर, टुपी शिखा नपारी र जनै बिना आचमन गरेर
खाए पनि त्यो द्विज अशुद्ध हुन्छ ।

**आचामेद् ब्राह्मतीर्थेन सोपवीती ह्युदङ्मुखः ।**
**उपवीती द्विजो नित्यं प्राङ्मुखो वाग्यतः शुचिः ॥१६॥**

जनै लगाई उत्तरतिर फर्केर ब्रह्मतीर्थले आचमन गर्नू । जनै लगाई पूर्व फर्केर चुपचाप बसेको
द्विज नित्य शुद्ध हुन्छ ।

**जले जलस्थ आचामेत् स्थलाचान्तो बहिः शुचिः ।**
**बहिरन्तस्थ आचान्त एवं शुद्धिमवाप्नुयात् ॥१७॥**

जलमा हुनेले जलमा र स्थलमा हुनेले स्थलमा बसेर आचमन गर्नाले भित्रबाहिरै शुद्ध हुन्छ ।

**अमणिबन्धनाद्धस्तौ पादावद्भिर्विशोधयेत् ।**
**परिमृज्य द्विरास्यन्तु द्वादशाङ्गानि च स्पृशेत् ॥१८॥**

हात पाखुरासम्म र दुवै गोडा पानीले धुनू । मुख दुई पटक सफा गर्नू र बाह्र वटै अङ्ग (दुई ओठ-नाकका प्वाल-आँखा-कान-हात-तिघ्रा) छुनू ।

**स्नात्वा पीत्वा तथा भुक्त्वा स्पृष्ट्वा चैव द्विजोत्तमाः ।**
**अनेन विधिना विप्र आचान्तः शुचितामियात् ॥१९॥**

द्विजोत्तमहरु नुहाएर, जल पिएर, खाएर र अपवित्र वस्तु छुनाले अपवित्र हुनेहरु यही विधिको आचमनले शुद्ध हुन्छन् ।

**शूद्रः शुद्ध्यति हस्तेन वैश्यो दन्तेषु वारिभिः ।**
**कण्ठागतैःक्षत्त्रियस्तु आचान्तःशुचितामियात् ॥२०॥**

शूद्र हातले जल छोएर, वैश्य दाँतले जल छोएर र क्षत्रिय आचमन गरी घाँटीमा जल पुगेर शुद्ध हुन्छ ।

**आसनारुढपादश्चाकृतावश्यक्रियस्तथा ।**
**आरुढपादुको वापि न शुद्ध्यति कदाचन ॥२१॥**

बस्ने आसन माथि गोडा राख्ने, आवश्यक कर्महरु नगर्ने र पादुका लाएको मानिस आचमन गरेर पनि शुद्ध हुँदैन ।

**उपासीत न चेत् सन्ध्यामग्निकार्यं न वा कृतम् ।**
**गायत्र्यष्टसहस्रन्तु जपेत् स्नात्वा समाहितः ॥२२॥**

(कुनै दिन) सन्ध्योपासना गरिएन वा अग्निहोत्र गरिएन भने नुहाएर शान्त चित्तले आठ हजार गायत्री जप गर्नू ।

**सूतकान्नं नवश्राद्धं मासिकान्नं तथैव च ।**
**ब्रह्मचारी तु योऽश्नीयात्त्रिरात्रेणैव शुध्यति ॥२३॥**

सूतकको, मरेकाको एघारौंको र मरेकाको मासिकको
अन्न खाने ब्रह्मचारी तीन रातमा शुद्ध हुन्छ ।

**ब्रह्मचारी तु यो गच्छेत् स्त्रियं कामप्रपीडितः ।**
**प्राजापत्यं चरेत् कृच्छ्रमथ त्वैकं सुयन्त्रितः ॥२४॥**

जो ब्रह्मचारी कामले पिडित भएर स्त्री-गमन गर्दछ उसले जितेन्द्रिय
भई एउटा कृच्छ्र-प्राजापत्य व्रत गर्नू ।

**ब्रह्मचारी तु योऽश्नीयान्मधुमांसं कथञ्चन ।**
**प्राजापत्यन्तु कृत्वासौ मौञ्जीहोमेन शुध्यति ॥२५॥**

ब्रह्मचारीले केही गरी मह वा मासु खान्छ भने उसले प्रापापत्य व्रत
गरी मौञ्जी होम (ब्रतबन्धको होम) गर्नू ।

**निर्वपेच्चपुरोडाशं ब्रह्मचारी च पर्वणि ।**
**मन्त्रैः शाकलहोमान्तैरग्नावाज्यञ्च होमयेत् ॥२६॥**

ब्रह्मचारीले पर्वहरुमा पुरोडाश होम गर्नू तथा शाकल
होमका मन्त्रहरुले अग्निमा आज्य होम गर्नू ।

**ब्रह्मचारी तु यः स्कन्देत् कामतः शुक्रमात्मनः ।**
**अवकीर्णी व्रतं कुर्य्यात् स्नात्वा शुद्ध्येदकामतः ॥२७॥**

ब्रह्मचारीले जानीजानी वीर्यस्खलन गरे अवकीर्णी व्रत गर्नू ।
अनजानमा वीर्यस्खलन भए नुहाएर शुद्ध हुन्छ ।

**भिक्षाटनमटित्वा तु स्वस्थो ह्येकान्नमश्नुते ।**
**अस्नात्वा चैव यो भुङ्क्ते गायत्र्यष्टशतं जपेत् ॥२८॥**

जो ब्रह्मचारी स्वस्थ हुँदाहुँदै भिक्षा मागेको कुरा एक्लै खान्छ वा
ननुहाई खान्छ उसले आठ सय पटक गायत्री जप्नू ।

**शूद्रहस्तेन योऽश्नीयात् पानीयं वा पिबेत् क्वचित् ।**
**अहोरात्रोषितो भूत्वा पञ्चगव्येन शुध्यति ॥२९॥**

जो ब्रह्मचारी शूद्रको हातले दिएको खान्छ वा अन्यत्रको पानी खान्छ उ
अहोरात्र उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**शुष्कपर्य्युषितोच्छिष्टं भुक्त्वान्नं केशदूषितम् ।**
**अहोरात्रोषितो भूत्वा पञ्चगव्येन शुध्यति ॥३०॥**

जो ब्रह्मचारी बासी, जुठो वा रौँ परेको अन्न खान्छ उ एक दिनरात
उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**शूद्राणां भाजने भुक्त्वा भुक्त्वा वा भिन्नभाजने ।**
**अहोरात्रोषितो भूत्वा पञ्चगव्येन शुद्ध्यति ॥३१॥**

शूद्रको भाँडामा खाने र टुटेफुटेको भाँडामा खाने ब्रह्मचारी एक दिनरात
उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**दिवा स्वपिति यः स्वस्थो ब्रह्मचारी कथञ्चन ।**
**स्नात्वा सूर्य्यं समीक्षेत गायत्र्यष्टशतं जपेत् ॥३२॥**

निरोगी हुँदा पनि दिउसै सुत्ने ब्रह्मचारीले नुहाएर सूर्य दर्शन गरी आठ सय गायत्री जप गर्नू ।

**एष धर्मः समाख्यातः प्रथमाश्रमवासिनाम् ।**
**एवं संवर्त्तमानस्तु प्राप्नोति परमां गतिम् ॥३३॥**

प्रथम ब्रह्मचर्याश्रमीका धर्मका बारेका यी कुरा बताइएको छ ।
यस अनुसार आचरण गर्ने व्यक्ति मोक्ष हुन्छ ।

**अथ द्विजो समावृतः सवर्णां स्त्रियमुद्वहेत् ।**
**कुले महति सम्भूतां लक्षणैश्च समन्विताम् ॥३४॥**

ब्रह्मचर्याश्रम सकी समापवर्तन गरी समान वर्णकी, उच्च कुलमा

जन्मिएकी र लक्षणकी कन्यासँग विवाह गर्नू ।

**ब्राह्मेणैव विवाहेन शीलरुपगुणान्विताम् ।**
**पञ्चयज्ञविधानञ्च कुर्य्यादहरहर्द्विजः ॥३५॥**

शील, रुप र गुण भएकी कन्यासँग ब्राह्म विधिले विवाह गर्नू । विवाह
गरेपछि दिनहुँ पञ्चयज्ञको विधान गर्नू ।

**न हापयेत् तु तान् शक्तः श्रेयस्कामः कदाचन ।**
**हानिं तेषां तु कुर्व्वीत सदा मरणजन्मनोः ॥३६॥**

श्रेय चाहने समर्थले कहिल्यै यो काम नछाड्नू । तर जन्म र
मरणका आशौचमा यसको त्याग गर्नू ।

**विप्रो दशाहमासीत दानाध्ययनवर्जितः ।**
**क्षत्त्रियो द्वादशाहानि वैश्यः पञ्चदशैव तु ॥३७॥**

जन्ममरणमा ब्राह्मणले दश दिन, क्षत्रियले बाह्र दिन र वैश्यले
पन्ध्र दिनसम्म दान एवं अध्ययन छाडी बस्नू ।

**शूद्र शुध्यति मासेन संवर्त्तवचनं यथा ।**
**प्रेतायान्नं जलं देयं स्नात्वा तद्गोत्रजैः सह ॥३८॥**

शूद्र एक महिनामा शुद्ध हुन्छ भनी संवर्त्त भन्छन् ।
सगोत्रीले नुहाई मृतकलाई अन्न र जल दिनू ।

**प्रथमेऽह्नि तृतीये च सप्तमे नवमे तथा ।**
**चतुर्थेऽहनि कर्तव्यमस्थिसञ्चयनं द्विजैः ॥३९॥**

द्विजले पहिलो, तेश्रो, सातौं, नवौं वा चौथो दिनमा मृतकको अस्थिसञ्चयन गर्नू ।

**ततः सञ्चयनादूर्ध्वमङ्गस्पर्शो विधीयते ।**
**चतुर्थेऽहनि विप्रस्य षष्ठे वै क्षत्त्रियस्य च ॥४०॥**

अस्थिसञ्चयन पछि अङ्ग छुने विधान छ । ब्राह्मणले चौथो र क्षत्रियले छैटौं दिन अङ्ग छुनू ।

**अष्टमे दशमे चैव स्पर्शः स्याद्वैश्यशूद्रयोः ।**
**जातस्यापि विधिर्दृष्ट एष एव महर्षिभिः ॥४१॥**

आठौं र दशौं दिन वैश्य र शूद्रका लागि अङ्ग छुने विधान छ ।
महर्षिले जन्ममा पनि यही विधि भनेका छन् ।

**दशरात्रेण शुध्येत द्विजो वेदविवर्ज्जितः ।**
**पुत्रे जाते पितुः स्नानं सचैलन्तु विधीयते ॥४२॥**

वेद नपढेका बाहुन दश दिनमा शुद्ध हुन्छन् । छोरो जन्मिँदा बाबुले सवस्त्र नुहाउने विधान छ ।

**माता शुध्येद् दशाहेन स्नातस्य स्पर्शनं पितुः ।**
**होमस्तत्र तु कर्त्तव्यः शुष्कान्नेन फलेन च ॥४३॥**

सूतकमा आमा दश दिनमा र नुहाएर बाबु छुन योग्य हुन्छ ।
सूतकमा सुक्खा अन्न र फलफूलले होम गर्नू ।

**पञ्चयज्ञविधानन्तु न कार्य्यं मृत्युजन्मनोः ।**
**दशाहात्तु परं सम्यग् विप्रोऽधीयीत धर्मवित् ॥४४॥**

जन्ममरणमा पञ्चयज्ञको काम नगर्नू । जुठोसूतकको दश दिनपछि
धर्मज्ञ ब्राह्मणले राम्ररी वेद अध्ययन गर्नू ।

**दानञ्च विधिना देयमशुभान्तकरं शुभम् ।**
**यद्यदिष्टतमं लोके यच्चापि दयितं गृहे ॥४५॥**

जे जे कुरा लोकमा उत्तम र घरमा प्रिय छन्, अशुभलाई नाश गर्ने
ती ती कुरा विधिपूर्वक दान दिनु पर्दछ ।

**तत्तद्गुणे देयं तदेवाक्षयमिच्छता ।**

**नानाविधानि द्रव्याणि धान्यानि सुबहूनि च ॥४६॥**

अक्षय पुण्य चाहनेले ती ती वस्तु गुणवानलाई दान दिनु पर्दछ ।
अनेक थरी द्रव्य र धेरै अन्न दान दिनू ।

**समुद्रजानि रत्नानि नरो विगतकल्मषः ।**
**दत्त्वा गुणाढ्यविप्राय प्राप्नोति महतीं श्रियम् ॥४७॥**

समुद्रमा पाइने सबै रत्न पापहीन मनुष्यले गुणी बाहुनलाई दान दिन्छ
भने उसले विशाल धन प्राप्त गर्दछ ।

**गन्धमाभरणं माल्यं यः प्रयच्छति धर्मवित् ।**
**स सुगन्धः सदा हृष्टो यत्र तत्रोपजायते ॥४८॥**

धर्मजान्ने मनुष्यले गन्ध, आभूषण र माला दानमा दिन्छ भने
सुगन्धवान र सदा प्रसन्न भई घुम्न पाउँदछ ।

**श्रोत्रियाय कुलीनायाभ्यर्थिने च विशेषतः ।**
**यद्दानं दीयते भक्त्या तद्भवेत्सुमहत्फलम् ॥४९॥**

जुन दान वेदपाठी ब्राह्मणलाई, उच्च कुलकालाई र विशेषतः प्रार्थीलाई
भक्तिले दिइन्छ त्यो धेरै फलदायी हुन्छ ।

**आहूय शीलसम्पन्नं श्रुतेनाभिजनेन च ।**
**शुचिं विप्रं महाप्राज्ञं हव्यकव्येषु पूजयेत् ॥५०॥**

शील, वेद र कुलले सम्पन्न, सदाचारी तथा विद्वान
ब्राह्मणलाई बोलाएर हव्यकव्यमा पूजा गर्नू ।

**नानाविधानि द्रव्याणि रसवन्तीप्सितानि च ।**
**श्रेयस्कामेन देयानि स्वर्गमक्षयमिच्छता ॥५१॥**

श्रेय वा अक्षय स्वर्ग चाहने मानिसले रसदार र कमला
अनेक प्रकारका द्रव्यहरु दान गर्नु पर्दछ ।

**वस्त्रदाता सुवेशः स्याद्रौप्यदो रुपमेव हि ।**
**हिरण्यदः समृद्धिं च तेजश्चायुश्च विन्दति ॥५२॥**

कपडा दान गर्नेले राम्रो लाउन पाउँछ, चाँदी दान गर्ने रुपशाली हुन्छ र सुन
दान गर्नेले समृद्धि, तेज र दीर्घायु पाउँदछ ।

**भूताभयप्रदानेन सर्वकामानवाप्नुयात् ।**
**दीर्घमायुश्च लभते सुखी चैव सदा भवेत् ॥५३॥**

जीवलाई अभयदान दिनेले सबै चाहेका कुरा प्राप्त गर्दछ ।
लामो आयु पाउँछ र सदा सुखी हुन्छ ।

**धान्योदकप्रदायी च सर्पिर्दः सुखमश्नुते ।**
**अलङ्कृत्यत्वलङ्कारं दत्त्वा प्राप्नोति तत्फलम् ॥५४॥**

धान, जल र घिउ दान गर्नेले सुख पाउँदछ तथा अलङ्कृत
भई अलङ्कार दानगरे त्यही फल (सुख) पाउँदछ ।

**फलमूलानि विप्राय शाकानि विविधानि च ।**
**सुरभीणि च पुष्पाणि दत्त्वा प्राज्ञः स जायते ॥५५॥**

ब्राह्मणलाई फलफूल कन्दमूल, विविध सागपात र सुगन्धित फूल दान गरे बुद्धिमान हुन्छ ।

**ताम्बूलं चैव यो दद्याद् ब्राह्मणेभ्यो विचक्षणः ।**
**मेधावी सुभगः प्राज्ञो दर्शनीयश्च जायते ॥५६॥**

ब्राह्मणलाई पान दान गर्ने बुद्धिमान मानिस चतुर, सुन्दर, तीक्ष्ण बुद्धिको र दर्शनीय हुन्छ ।

**पादुकोपानहौ च्छत्रं शयनान्यासनानि च ।**
**विविधानि च यानानि दत्त्वा दिव्यगतिर्भवेत् ॥५७॥**

खराउ र जुत्ता, छाता, आसन, ओछ्यान एवं अनेक थरी बाहन दान गरे मोक्ष हुन्छ ।

**दद्याच्च शिशिरे त्वग्निं बहुकाष्ठं प्रयत्नतः ।**
**कायाग्निदीप्तिं प्राज्ञत्वं रूपसौभाग्यमाप्नयात् ॥५८॥**

शिशिर ऋतुमा धेरै दाउरा युक्त अग्नि दानगर्नेको जठराग्नि
बलियो हुन्छ तथा बुद्धि, रुप र सौभाग्य पाउँदछ ।

**औषधं स्नेहमाहारं रोगिणां रोगशान्तये ।**
**दत्त्वा स्याद्रोगरहितः सुखी दीर्घायुरेव च ॥५९॥**

रोगीको रोग शान्त गर्न उसलाई औषधी, माया र खान दिनाले
मानिस सुखी र लामो आयुको हुन्छ ।

**इन्धनानि च यो दद्याद्विप्रेभ्यः शिशिरागमे ।**
**नित्यं जयति संग्रामे श्रिया युक्तस्तु दीप्यते ॥६०॥**

जो शिशिर ऋतु आउँदा ब्राह्मणलाई इन्धन दान गर्दछ, उ संग्राममा
नित्य विजयी हुन्छ र श्रीले प्रकाशित हुन्छ ।

**अलङ्कृत्य तु यः कन्यां वराय सदृशाय वै ।**
**ब्राह्मणे तु विवाहेन दद्यात्तान्तु सुपूजिताम् ॥६१॥**

वस्त्र र आभूषणले सजाएर समान वर्णको वरलाई ब्राह्म
विधिले पूजा गरेर कन्यादान गर्दछ भने ...।

**स कन्यायाः प्रदानेन श्रेयो विन्दति पुष्कलम् ।**
**साधुवादं लभेत् सद्भिः कीर्तिं प्राप्नोति पुष्कलाम् ॥६२॥**

... उसलाई अथाह श्रेय प्राप्ति हुन्छ, उसले सज्जनबाट आशिर्वाद र ठूलो कीर्ति पाउँदछ ।

**ज्योतिष्टोमातिरात्राणां शतं शतगुणीकृतम् ।**
**प्राप्नोति पुरुषो दत्त्वा होममन्त्रैस्तु संस्कृताम् ॥६३॥**

होमका मन्त्रले सुसंस्कृत कन्यालाई दान दिनाले सय वटा ज्योतिष्टोम
यज्ञ र अतिरात्र यज्ञ गरेको भन्दा सय गुणा बढी फल प्राप्त गर्दछ ।

**तां दत्त्वा तु पिता कन्यां भूषणाच्छादनासनैः ।**
**पूजयन् स्वर्गमाप्नोति नित्यमुत्सववृद्धिषु ॥६४॥**

जो बाबु विवाहिता छोरीलाई छोराको जन्मादि उत्सवमा नित्य बोलाएर भूषण,
कपडा र भोजनले सत्कार गर्दछ उसले स्वर्ग पाउँदछ ।

**रोमकाले तु संप्राप्ते सोमो भुङ्क्तेथ कन्यकाम् ।**
**रजो दृष्ट्वा तु गन्धर्वः कुचौ दृष्ट्वा तु पावकः ॥६५॥**

रौँ उम्रँदा सोमले, रजोदर्शन हुँदा गन्धर्वले र दूधको मुन्टो
दर्शन गरी अग्निले कन्याको भोग गर्दछन् ।

**अष्टवर्षा भवेद् गौरी नववर्षा तु रोहिणी ।**
**दशवर्षा भवेत् कन्या अत ऊर्ध्वं रजस्वला ॥६६॥**

आठ वर्षकी कन्या गौरी, नौ वर्षकी रोहिणी, दश वर्षकी कन्या र त्यसपछि रजस्वला हुन्छे ।

**माता चैव पिता चैव ज्येष्ठो भ्राता तथैव च ।**
**त्रयस्ते नरकं यान्ति दृष्ट्वा कन्यां रजस्वलाम् ॥६७॥**

कन्याका मातापिता तथा जेठा दाजु कन्या रजस्वला भएको देखेर नरकमा पर्दछन् ।

**तस्माद्विवाहयेत् कन्यां यावन्नर्त्तुमती भवेत् ।**
**विवाहो ह्यष्टवर्षायाः कन्यायास्तु प्रशस्यते ॥६८॥**

यसकारण कन्या परनसर्दै उसको विवाह गर्नू । आठ
वर्षकी कन्याको विवाह श्रेष्ठ मानिएको छ ।

**तैलमास्तरणं प्राज्ञः पादाभ्यङ्गं ददाति यः ।**
**प्रहृष्टमानसो लोके सुखी चैव सदा भवेत् ॥६९॥**
जसले तेल, ओछ्यान, बुकुवा आदि दान गर्दछ त्यो मानिसको

चित्त सदा प्रसन्न रहन्छ र सुखी हुन्छ ।

**अनड्वाहौ च यो दद्यात् द्विजे सीरेण संयुतौ ।**
**अलङ्कृत्य यथाशक्त्या धूर्व्वहौ शुभलक्षणौ ॥७०॥**
**सर्वपापविशुद्धात्मा सर्वकामसमन्वितः ।**
**वर्षाणि वसति स्वर्गे रोमसंख्याप्रमाणतः ॥७१॥**

जसले हलोमा नारिएका, जुवा तान्ने, शुभ लक्षणका दुई वटा साँढेलाई शक्ति अनुसार अलङ्कृत पारी ब्राह्मणलाई दान गर्दछ, उसका अन्तस्करण पापरहीत भएर सोचेका कुरा पूरा हुन्छन् र उ दान दिइएका साँढेको शरीरका भएका रौं जति नै वर्षसम्म स्वर्गमा बस्न पाउँदछ ।

**धेनुञ्च यो द्विजे दद्यादलङ्कृत्य पयस्विनीम् ।**
**कांस्यवस्त्रादिभिर्युक्तां स्वर्गलोके महीयते ॥७२॥**

जसले लैनु गाईलाई सजाएर काँसको भाँडा र वस्त्र सहित
ब्राह्मणलाई दान गर्दछ उ स्वर्गमा पूजिन्छ ।

**भूमिं शस्यवतीं श्रेष्ठां ब्राह्मणे वेदपारगे ।**
**गां दत्त्वार्धप्रसूताञ्च स्वर्गलोगे महीयते ॥७३॥**

घाँस सहितको भूमि र आधा बिहाएकी गाई वेदजान्ने
ब्राह्मणलाई दान दिने व्यक्ति स्वर्गमा पूजिन्छ ।

**यावन्ति शस्यमूलानि गोरोमाणि च सर्वशः ।**
**नरस्तावन्ति वर्षाणि स्वर्गलोके महीयते ॥७४॥**

घाँसका जति जरा हुन्छन् र गाईका जीउमा जति रौं हुन्छन्
त्यति वर्षसम्म उसलाई स्वर्गमा पूजा गरिन्छ ।

**यो ददाति शफैरौप्यैर्हैमश्रृङ्गीमरोगिणीम् ।**
**सवत्सां वाससा वीतां सुशीलाङ्गां पयस्विनीम् ॥७५॥**
**तस्यां यावन्ति रोमाणि सवत्सायां दिवं गतः ।**
**तावद्वर्षसहस्राणि स नरो ब्रह्मणोऽन्तिके ॥७६॥**

जो मानिस चाँदीका खुर, सुनका सिङले युक्त, निरोगी, बाच्छा वा बाच्छीले सहित, कपडाले ढाकिएकी र उत्तम स्वभावकी लैनु गाई दान गर्दछ उ स्वर्गमा गएर बाछो सहित गाईको शरीरमा भएका रौं जति नै वर्षसम्म ब्रह्मको समिपमा वास गर्दछ ।

**यो ददाति बलीवर्द्दमुक्तेन विधिना शुभम् ।**
**अव्यङ्गं गोप्रदानेन फलाद्दशगुणं फलम् ॥७७॥**

यही विधिले सर्वाङ्गपूर्ण साँढे दान गर्नेले गाई दानको दश गुणा बढी फल पाउँदछ ।

**अग्नेरपत्यं प्रथमं सुवर्णं भुर्वैष्णवी सूर्यसुताश्च गावः ।**
**लोकास्त्रयस्तेन भवन्ति दत्ता यःकाञ्चनं गाञ्च महीञ्च दद्यात् ॥७८॥**

सुन अग्निको पहिलो सन्तान हो, पृथिवी विष्णुकी छोरी हुन् र गाईहरु सूर्यका छोरी हुन् । त्यसैले यी तीन कुरा सुन, गाई र पृथिवी दान गर्नाले तीनै लोकको दान हुन जान्छ ।

**सर्वेषामेव दानानामेकजन्मानुगं फलम् ।**
**हाटकक्षितिगौरीणां सप्तजन्मानुगं फलम् ॥७९॥**

सबै अरु कुराको दानको फल एक जन्मसम्मका लागि हुन्छ तर सुन, भूमि र गाई दानको फल सात जन्मको लागि हुन्छ ।

**अन्नदस्तु भवेन्नित्यं सुतृप्तो निभृतः सदा ।**
**अम्बुदश्च सुखी नित्यं सर्वकर्मसमन्वितः ॥८०॥**

अन्न दान गर्ने सधैं राम्ररी तृप्त र भरिपूर्ण हुन्छ । जल दान गर्ने नित्य सुखी र सबै कर्ममा लागिरहने हुन्छ ।

**सर्वेषामेव दानानामन्नदानं परं स्मृतम् ।**
**सर्वेषामेव जन्तूनां यतस्तज्जीवितं परम् ॥८१॥**

सबै दानहरुमा अन्नदान उत्तम मानिन्छ किनकि यो सबै प्राणीको जीवनको आधार हो ।

**यस्मादन्नात् प्रजाः सर्व्वाःकल्पे कल्पेऽसृजत् प्रभुः ।**
**तस्मादन्नात् परं दानं न भूतो न भविष्यति ॥८२॥**

प्रत्येक कल्पमा ईश्वरले सबै प्रजालाई अन्नले उत्पन्न गरेकाले
अन्नदान भन्दा ठूलो न कुनै दान छ न हुनेछ ।

**अन्नदानात् परं दानं विद्यते न हि किञ्चन ।**
**अन्नाद् भूतानि जायन्ते जीवन्ति च न संशयः ॥८३॥**

अन्नदान भन्दा ठूलो कुनै दान छैन । अन्नले नै प्राणी
जन्मन्छन् र बाँच्दछन्, यसमा शङ्का छैन ।

**मृत्तिकां गोशकृद्दर्भानुपवीतं यथोत्तरम् ।**
**दत्त्वा गुणाढ्यविप्राय कुले महति जायते ॥८४॥**

माटो, गोबर, कुश र जनैका गुणमा हुर्केका ब्राह्मणलाई
क्रमैले दान दिनाले महान कुलमा उत्पन्न हुन्छ ।

**मुखवासञ्च यो दद्याद्दन्तधावनमेव च ।**
**शुचिगन्धसमायुक्तोऽवाग्दुष्टः स सदा भवेत् ॥८५॥**

जसले खाने मसला र दतिवन दान गर्दछ उ पवित्र वासनाले
युक्त भई कहिल्यै वाणीको दोषले युक्त हुँदैन ।

**पादशौचन्तु यो दद्यात्तथा च गुदलिङ्गयोः ।**
**यः प्रयच्छति विप्राय शुद्धबुद्धिः सदा भवेत् ॥८६॥**

जसले ब्राह्मणलाई गोडा धुन वा दिसा र जननेन्द्रिय धुन जल
दिन्छ त्यो सधैं शुद्ध बुद्धिको हुन्छ ।

**औषधं पथ्यमाहारं स्नेहाभ्यङ्गं प्रतिश्रयम् ।**
**यः प्रयच्छति रोगिभ्यः सर्वव्याधिविवर्जितः ॥८७॥**

औषधि, स्वास्थवर्द्धक आहार, तेलमालिश र आश्रय जसले
रोगीलाई दिन्छ उ सबै खाले रोगबाट मुक्त हुन्छ ।

**गुडमिक्षुरसञ्चैव लवणं व्यञ्जनानि च ।**

**सुरभीणि च पापानि दत्त्वात्यन्तं सुखी भवेत् ॥८८॥**

सखर, ऊखुको रस, नुन र मसला तथा सुगन्धित पेय पदार्थ दान दिनाले अत्यन्त सुखी हुन्छ ।

**दानैश्च विविधैः सम्यक् पुण्यमेतदुदाहृतम् ।**
**विद्यादानेन सुमतिर्ब्रह्मलोके महीयते ॥८९॥**

विविध किसिमका दानले हुने लाभ बताइएको छ । विद्यादानले
उत्तम बुद्धिको भई ब्रह्मलोकमा पूजिन्छ ।

**अन्योन्यान्नप्रदा विप्रा अन्योन्यप्रतिपूजकाः ।**
**अन्योन्यं प्रतिगृह्णन्ति तारयन्ति तरन्ति च ॥९०॥**

एकअर्कालाई अन्न दिने, पूजा गर्ने र धन स्वीकार गर्ने ब्राह्मण
अरुलाई तार्दछन् र आफू पनि तर्दछन् ।

**दानान्येतानि देयानि तथान्यानि विशेषतः ।**
**दीनान्धकृपणादिभ्यः श्रेयस्कामेन धीमता ॥९१॥**

श्रेय चाहनेबाट यि र यस्तै अन्य कुराहरुको दान विशेषतः गरिब,
अन्धा र दयनीयलाई विधिले दिइनु पर्दछ ।

**ब्रह्मचारियतिभ्यश्च वपनं यस्तु कारयेत् ।**
**नखकर्मादिकञ्चैव चक्षुष्मान् जायते नरः ॥९२॥**

ब्रह्मचारी र सन्यासीको कपाल खौराउने, नङ कटाउने आदि
काम गराउने मानिस असल आँखायुक्त हुन्छ ।

**देवागारे द्विजातीनां दीपं दद्याच्चतुष्पथे ।**
**मेधाविज्ञानसम्पन्नश्चक्षुष्मान् जायते नरः ॥९३॥**

मन्दिरमा, ब्राह्मणलाई र चौबाटोमा दीपदान गर्ने व्यक्ति सधैं मेधावी,
ज्ञानवान् र दृष्टिवान् हुन्छ ।

**नित्ये नैमित्तिके काम्ये तिलान् दत्त्वा तु शक्तितः ।**
**प्रजावान् पशुमांश्चैव धनवान् जायते नरः ॥९४॥**

नित्य, नैमित्तिक र काम्य कर्ममा शक्ति अनुसार तिल दान गर्ने
व्यक्ति सन्तान, पशु र धनले पूर्ण हुन्छ ।

**यो यदाभ्यर्थितो विप्रैर्यद्यत् संप्रतिपादयेत् ।**
**तृणकाष्ठादिकञ्चैव गोप्रदानसमं भवेत् ॥९५॥**

जो ब्राह्मणले जुन समयमा जे चाहन्छ त्यो दिन्छ वा घाँसपात,
काठ आदि दिन्छ त्यो गोदान समान हुन्छ ।

**न वै शयीत तमसा न यज्ञे नानृतं वदेत् ।**
**अपवदेन्न विप्रस्य न दत्त्वा परिकीर्तयेत् ॥९६॥**

अन्धकारमा र यज्ञमा झुटो नबोल । ब्राह्मणको निन्दा नगर । दान दिएर फलाक्दै नहिँड ।

**यज्ञोऽनृतेन क्षरति तपः क्षरति विस्मयात् ।**
**आयुर्विप्रापवादेन दानं च परिकीर्तनात् ॥९७॥**

यज्ञ झुट बोल्नाले क्षीण हुन्छ । तप घमण्ड गर्नाले क्षीण हुन्छ । ब्राह्मण-निन्दाले
आयु क्षीण हुन्छ । फलाक्दै हिँडेमा दानको महत्व समाप्त हुन्छ ।

**चत्वार्येतानि कर्माणि सनध्यायां वर्जयेद् बुधः ।**
**आहारं मैथुनं निद्रां तथा संपाठमेव च ॥९८॥**

विद्वानले यी चार कुरा साँझमा नगर्नू-भोजन, मैथुन, सुत्ने काम र पठनपाठन ।

**आहाराज्जायते व्याधिर्गर्भो वै रौद्रमैथुनात् ।**
**निद्रातो जायतेऽलक्ष्मीः संपाठादायुषः क्षयः ॥९९॥**

भोजनले रोग लाग्छ । मैथुनले भयानक गर्भ रहन्छ । सुते लक्ष्मी जान्छिन् ।
पठनपाठन गरे आयु घट्दछ ।

**ऋतुमतीं तु यो भार्यां सन्निधौ नोपगच्छति ।**
**तस्या रजसि तन्मासं पितरस्तस्य शेरते ॥१००॥**

ऋतुस्नाता स्त्रीसँग सहवास नगर्नेका पितृहरु त्यो महिनाभर त्यसै स्त्रीको रजमा सुत्दछन् ।

**कृत्वा गृह्याणि कर्माणि स्वभार्य्यापोषणे रतः ।**
**ऋतुकालाभिगामी स्यात् प्राप्नोति परमां गतिम् ॥१०१॥**

गृहस्थकर्म गर्दै पत्नीको पालनपोषणमा व्यस्त र ऋतुस्नाता स्व-स्त्रीसँग
मात्र सहवास गर्ने व्यक्तिले परमगति पाउँदछ ।

**उषित्वैवं गृहे विप्रो द्वितीयादाश्रमात् परम् ।**
**वलीपलितसंयुक्तस्तृतीयन्तु समाश्रयेत् ॥१०२॥**

यसरी घरगृहस्थीमा बसेर दोश्रो (गृहस्थाश्रम) आश्रम पछि चाउरी र
फुलेका कपाल लिई तेश्रो आश्रमको आश्रय लिनू ।

**गच्छेदेवं वनं प्राज्ञः सभार्यस्त्वेक एव वा ।**
**गृहीत्वा चाग्निहोत्रञ्च होमं तत्र न हापयेत् ॥१०३॥**

यसरी गृहस्थाश्रम पछि बुद्धिमानले पत्नीसँगै वा एक्लै बनमा जानू र त्यहाँ पनि
अग्निहोत्र ग्रहण गरी होम गर्न नछाड्नू ।

**कुर्य्याच्चैव पुरोडाशं वन्यैर्मेध्यैर्यथाविधि ।**
**भिक्षाञ्च भिक्षवे दद्याच्छाकमूलफलादिभिः ॥१०४॥**

वनमा उत्पन्न हुने यज्ञीय पदार्थले विधिपूर्वक पुरोडाश बनाई सागपात, कन्दमूल,
फलफूल आदिसँगै माग्न आउनेलाई भिक्षा दिनू ।

**कुर्य्यादध्ययनं नित्यमग्निहोत्रपरायणः ।**
**इष्टिं पार्व्वायणीयाञ्च प्रकुर्य्यात् प्रतिपर्वसु ॥१०५॥**

अग्निहोममा तत्पर भई नित्य अध्ययन गर्नू, पर्वमा ती पर्वसम्बन्धी इष्टि (होम) गर्नू ।

**उषित्वैवं वने विप्रो विधिज्ञः सर्वकर्मसु ।**
**चतुर्थमाश्रमं गच्छेद्धुतहोमो जितेन्द्रियः ॥१०६॥**

यसरी सबै कर्मका विधि जान्ने विप्र बनमा बस्दै, होम गर्दै,
इन्द्रियलाई जित्दै चौथो आश्रममा प्रवेश गर्नू ।

**अग्निमात्मनि संस्थाप्य द्विजः प्रव्रजितो भवेत् ।**
**वेदाभ्यासरतो नित्यमात्मविद्यापरायणः ॥१०७॥**

आफूभित्र अग्निलाई स्थापित गरी द्विजले सन्यास धर्म अँगाल्नू ।
नित्य वेदाभ्यासमा तत्पर भई आत्मविद्यामा लागि पर्नू ।

**अष्टौ भिक्षाः समादाय स मुनिः सप्त पञ्च वा ।**
**अद्भिः प्रक्षाल्य तत्सर्व्वं भुञ्जीत च समाहितः ॥१०८॥**

त्यस्तो मुनिले आठ, सात, वा पाँच भिक्षा मागेर लेराई
त्यो सबैमा जल छर्की संयमित भई उपभोग गर्नू ।

**अरण्ये निर्ज्जने तत्र पुनरासीत भुक्तवान् ।**
**एकाकी चिन्तयेन्नित्यं मनोवाक्कायकर्मभिः ॥१०९॥**

अघाएपछि त्यहाँ निर्जन वनमा रहेर एक्लै मन, वचन र कर्मले नित्य ईश्वरको चिन्तन गर्नू ।

**मृत्युञ्च नाभिनन्देत जीवितं वा कथञ्चन ।**
**कालमेव प्रतीक्षेत यावतायुः समाप्यते ॥११०॥**

जीवन वा मृत्युको कुनै परवाह वा चिन्ता नगर्नू ।
आयु समाप्त भई आउने काललाई पर्खेर बस्नू ।

**संसेव्य चाश्रमान् सर्वान् जितक्रोधो जितेन्द्रियः ।**
**ब्रह्मलोकमेवाप्नोति वेदशास्त्रार्थविद् द्विजः ॥१११॥**

सबै आश्रम अँगाली क्रोध र इन्द्रियलाई जितेको एवं वेद र शास्त्रको
अर्थ जानेको द्विजले ब्रह्मलोक प्राप्त गर्दछ ।

**आश्रमेषु च सर्वेषु प्रोक्तोऽयं प्राश्निको विधिः ।**
**अथाभिवक्ष्ये पापानां प्रायश्चित्तं यथाविधि ॥११२॥**

सबै आश्रमका बारेमा यो निर्णायक विधि बताइएको छ । यसपछि
पापको प्रायश्चितका विधि बताइने छ ।

**ब्रह्मघ्नश्च सुरापश्च स्तेयी च गुरुतल्पगः ।**
**महापातकिनस्त्वेते तत्संयोगी च पञ्चमः ॥११३॥**

ब्राह्मणको हत्यारा, सुरा पेयी, चोर, गुरु पत्नी गमन गर्ने र यिनका
सहयोगी-यी पाँच महापापी हुन्छन् ।

**ब्रह्मघ्नस्तु वनं गच्छेत् वल्कवासा जटी ध्वजी ।**
**वन्यान्येव फलान्यश्नन् सर्व्वकामविवर्जितः ॥११४॥**

ब्राह्मण हत्याराले बनमा जानू, बोक्रा लगाउनू, जटा पाल्नू, हत्याराको
चिह्न लिनू र सबै इच्छा त्यागी वनका फलफूल खानू ।

**भिक्षार्थी विचरेद् ग्रामं वन्यैर्यदि न जीवति ।**
**चातुर्वर्ण्यं चरेद्भैक्षं खट्वाङ्गी संयतः सदा ॥११५॥**

फलफूलले नपुगे भिक्षुक भई गाऊँमा डुल्नू, सधैं खट्वाङ्गी र
संयमित भई चारै वर्णसँग भिक्षा माग्नू ।
*नोट : खट्वाङ्गी : ब्रह्महत्या गरेमा त्यसै ब्राह्मण वा अरू मानिसको खप्परको भन्डा बनाई प्रायश्चित्तको*
*लागि त्यसैमा भीख माग्दै खाँदै विचरण गर्ने कार्य ।*

**भैक्षञ्चैव समादाय वनं गच्छेत्ततः पुनः ।**
**वनवासी स पापःस्यात् सदाकालमतन्द्रितः ॥११६॥**

भिक्षा मागी पुनः वनमै जानू, त्यो पापीले अल्छी नगरी सधैं वनवासी हुनू ।

**ख्यापयन् मुच्यते पापात् ब्रह्मघ्नः पापकृन्नरः ।**
**अनेन तु विधानेन द्वादशाब्दव्रतञ्चरेत् ॥११७॥**

ब्राह्मणको हत्या गर्ने पापीले आफूले गरेको पाप पटकपटक भन्दा
पापबाट छुट्दछ, यो विधिले बाह्र वर्षको व्रत गर्नू ।

**संनियम्येन्द्रियग्रामं सर्वभूतहिते रतः ।**
**ब्रह्महत्यापनोदाय ततो मुच्येत किल्विषात् ॥११८॥**

ब्रह्महत्याको पापबाट मुक्त हुन इन्द्रियलाई नियन्त्रण गरी
सबै प्राणीको कल्याणमा लागिरहनु पर्दछ ।

**अतः परं सुरापस्य प्रवक्ष्यामि विनिष्कृतिम् ।**
**श्रोतुमिच्छत भो विप्रा वेदशास्त्रानुरूपिकाम् ॥११९॥**

यसपछि सुरा पिउनेको प्रायश्चितलाई बताउँदछु । तपाईँहरू
वेदशास्त्र अनुरूप त्यसलाई सुन्ने मन गर्नु होस् ।

**गौडी माध्वी च पैष्टी च विज्ञेया त्रिविधा सुरा ।**
**यथैवैका तथा सर्वा न पातव्या द्विजोत्तमैः ॥१२०॥**

सखर, मह-महुवा वा अङ्गुरादि तथा अन्नादिले बनेका गरी सुरा तीन थरी हुन्छ ।
एउटा जस्तो हो सबै उस्तै हुन् र उत्तम द्विजले यसलाई नपिउनू ।

**सुरापस्तु सुरां तप्तां पिबेत्तत्पापमोक्षकः ।**
**गोमूत्रमग्निवर्णञ्च गोमयं वा तथाविधम् ॥१२१॥**

सुरा पिएको पापबाट मुक्त हुन चाहने शराबीले तातो सुरा पिउनू । तताएर उमालिएको
गहुँत वा त्यही विधिले गोबर खानू ।

**घृतं वा त्रीणि पेयानि सुरापो व्रतमाचरेत् ।**
**मुच्यते तेन पापेन प्रायश्चित्ते कृते सति ॥१२२॥**

वा तातो घिउ पिउनू, यी तीन पेय हुन् । सुरापान गर्नेले व्रत बस्नू ।
प्रायश्चित गरेपछि पापबाट मुक्त हुन्छ ।

**अरण्ये वा वसेत् सम्यक् सर्वकामविवर्जितः ।**
**चान्द्रायणानि वा त्रीणि सुरापो व्रतमाचरेत् ॥१२३॥**

अथवा सबै कामना त्यागेर राम्ररी वनमा बस्नू वा तीन वटा
चान्द्रायण व्रत गर्नू वा सुरापान गर्नेले गर्ने व्रत गर्नू ।

**एवं शुद्धि सुरापस्य भवेदिति न सशंयः ।**
**मद्यभाण्डोदकं पीत्वा पुनः संस्कारमर्हति ॥१२४॥**

सुरापेयीको यसरी शुद्धी हुन्छ । रक्सीको भाँडामा पानी पिए उ फेरी संस्कार गर्न योग्य हुन्छ ।

**स्तेयं कृत्वा सुवर्णस्य राज्ञे शंसेत मानवः ।**
**ततो मुसलमादाय स्तेनं हन्यात् सकृन्नृपः ॥१२५॥**

सुन चोरले आफूले चोरेको चिज राजासमक्ष कबोल गर्नू र राजाले
चोरलाई एक पटक मुसलले हिर्काउनू ।

**यदि जीवति स स्तेनस्ततः स्तेयात् प्रमुच्यते ।**
**अरण्ये चीरवासा वा चरेद् ब्रह्महणो व्रतम् ।**
**एवं शुद्धिः कृत्वा स्तेये संवर्त्तवचनं यथा ॥१२६॥**

यसरी बाँचे चोरीको पापबाट मुक्त हुन्छ । विकल्पमा चोरले च्यातिएका लुगा लगाई
वनमा बसेर ब्रह्महत्याको व्रत गर्नू । संवर्त्तको विचारमा चोरको पाप यसै गर्नाले शुद्ध हुन्छ ।

**गुरुतल्पे शयानस्तु तल्पे स्वप्यादयोमये ।**
**समालिङ्गेत् स्त्रियं वापि दीप्तां कृत्वायसा कृताम् ॥१२७॥**

गुरुपत्नी गामीले फलामको तताएर रातो पारिएको ओछ्यानमा सुत्नू वा
यस्तो तातो रातो स्त्रीमूर्तिलाई अँगालो हाल्नू ।

**चान्द्रायणानि वा कुर्य्याच्चत्वारि त्रीणि वा द्विजः ।**

**ततो विमुच्यते पापात् प्रायश्चित्ते कृते सति ॥१२८॥**

त्यसपछि चार वा तीन चान्द्रायण व्रत गर्नू । यसरी प्रायश्चित गरेपछि द्विज पापमुक्त हुन्छ ।

**एभिः सम्पर्कमायाति यः कश्चित् पापमोहितः ।**
**तत्तत्पापविशुद्ध्यर्थं तस्य तस्य व्रतञ्चरेत् ॥१२९॥**

पापले मोहित भई जुन् जुन् महापापीका सङ्गत गर्दछन् तिनले
त्यो त्यो पापको शुद्धिको प्रायश्चितको व्रत गर्नू ।

**क्षत्रियस्य वधं कृत्वा त्रिभिः कृच्छ्रैर्विशुद्ध्यति ।**
**कुर्य्याच्चैवानुरुपेण त्रीणि कृच्छ्राणि संयतः ॥१३०॥**

क्षत्रियको हत्या गरेमा तीन कृच्छ्रव्रतले शुद्ध हुन्छ । यसैले
संयमित भई तीन कृच्छ्रव्रत विधिपूर्वक गर्नू ।

**वैश्यहत्यान्तु संप्राप्तः कथञ्चित् काममोहितः ।**
**कृच्छ्रातिकृच्छ्रौ कुर्व्वीत स नरो वैश्यघातकः ॥१३१॥**

केही गरी कामले मोहित भई वैश्यको हत्या हुन गए,
त्यस्ता हत्या गर्नेले कृच्छ्र वा अतिकृच्छ्र व्रत गर्नू ।

**कुर्य्याच्छूद्रवधं प्राप्तस्तप्तकृच्छ्रं यथाविधि ।**
**एवं शुद्धिमवाप्नोति संवर्त्तवचनं यथा ॥१३२॥**

शूद्रको हत्या गर्नेले विधिपूर्वक तप्तकृच्छ्र व्रत गर्नू । संवर्तका विचारमा उ यसैगरी शुद्ध हुन्छ ।

**गोघ्नस्यातः प्रवक्ष्यामि निष्कृतिं तत्त्वतः शूभाम् ॥१३३॥**

यसपछि म गाईहत्याको शुभ प्रायश्चितको तत्वपूर्ण प्रवचन गर्नेछु ।

**गोघ्नः कुर्व्वीत संस्कारं गोष्ठे गोरुपसन्निधौ ।**
**तत्रैव क्षितिशायी स्यान्मासार्द्धं संयतेन्द्रियः ॥१३४॥**

गाईको हत्या गर्नेले गोठमा गाईका सामु संस्कार गर्नू (बस्नू) । संयमतापूर्वक पन्ध्र दिनसम्म त्यहीँ भुईँमा सुत्नू ।

**स्नानं त्रिषवणं कुर्यान्नखलोमविवर्जितः ।**
**सक्तुयावकभिक्षाशी पयो दधि शकृन्नरः ॥१३५॥**

नङ र कपाल काटी त्रिषवण स्नान गर्नू, सातु र जौको भिक्षा वा दूध, दही र गोबर खाने बन्नू ।

**एतानि क्रमशोऽश्नीयाद् द्विजस्तत्पापमोक्षकः ।**
**गायत्रीञ्च जपेन्नित्यं पवित्राणि च शक्तितः ॥१३६॥**

पापबाट मुक्त हुन यी कुरा क्रमैले खानू । नित्य शक्ति अनुसार गायत्री तथा पवित्र मन्त्रहरु जप गर्नू ।

**पूर्णे चैवार्द्धमासे च विप्रान् भोजयेद् द्विजः ।**
**भुक्तवत्सु च विप्रेषु गाञ्च दद्यात् स दक्षिणाम् ॥१३७॥**

महिना वा पन्ध्र दिन भएपछि त्यो द्विजले ब्राह्मण भोजन गराउनू र भोजन गरेपछि त्यो बुद्धिमानले ती ब्राह्मणलाई गाई दान दिनू ।

**व्यापन्नानां बहूनां च वन्धने रोधनेऽपि वा ।**
**भिषङ्मिथ्योपचारे च द्विगुणं व्रतमाचरेत् ॥१३८॥**

छेक्दा, बाँध्दा र झुटो (व्यर्थ) उपचार गर्दा यदि धेरै गाई मरे भने यसका लागि वैद्यले दोब्बर व्रत गर्नू ।

**एका चेद्बहुभिः केश्चिद्दैवाद् व्यापादिता क्वचित् ।**
**पादं पादन्तु हत्यायाश्चरेयुस्ते पृथक् पृथक् ॥१३९॥**

धेरै मिलेर दुर्भाग्यवश एउटा गाई मारिन गए त्यो हत्याको लागि सबैले छुट्टाछुट्टै एक-एक अंश प्रायश्चित गर्नू ।

**यन्त्रणे गोश्चिकित्सार्थे गूढगर्भविमोचने ।**
**यदि तत्र विपत्तिः स्यान्न स पापेन लिप्यते ॥१४०॥**

औषधी गर्न गाईलाई तह लगाउँदा वा मृत-गर्भ बाहिर निकाल्दा
दुर्घटना हुन गए, गर्ने व्यक्ति पापमा लिप्त हुँदैन ।

**औषधं स्नेहमाहारं दद्याद् गोब्राह्मणेषु च ।**
**दीयमाने विपत्तिःस्यात्पुण्यमेव न पातकम् ॥१४१॥**

गाई र ब्राह्मणलाई औषधी, चिल्लोचाप्लो र खानेकुरा दिँदा
दुर्घटनावश केही भए पाप होइन पुण्य नै हुन्छ ।

**प्रायश्चित्तस्य पादन्तु रोधेषु व्रतमाचरेत् ।**
**द्वौ पादौ बन्धने चैव पादोनं यन्त्रणे तथा ॥१४२॥**

रोक्दा खेरी मरे एक चौथाई, बाँध्दा मरे आधा र तह लगाउँदा गाई मरे तीन चौथाई व्रत बस्नू ।

**पाषाणैर्लगुडैर्दण्डैस्तथा शस्त्रादिभिर्नरः ।**
**निपातने चरेत् सर्वं प्रायश्चित्तं दिनत्रयम् ॥१४३॥**

ढुङ्गा, लौरो, लाठो र हतियार आदिले हिर्काएर गाई मार्ने
मानिसले तीन दिनसम्म पूर्ण प्रायश्चित गर्नू ।

**हस्तिनं तुरगं हत्वा महिषोष्ट्रकपींस्तथा ।**
**एवंविधे द्विजःकुर्व्वीत् सप्तरात्रमभोजनम् ॥१४४॥**

हात्ती, घोडा, भैंसी, ऊँट तथा बाँदर मारे वा आफूद्वारा मारिन
गएमा द्विजले सात रातसम्म भोजन नगर्नू ।

**व्याघ्रं श्वानं खरं सिंहमृक्षं शूकरमेव च ।**
**एतान् हत्वा द्विजःमोहात् त्रिरात्रेणैव शुध्यति ॥१४५॥**

मोहवश बाघ, कुकुर, गधा, सिँह, भालु र सुँगुरको हत्या गरे द्विज तीन रातमा शुद्ध हुन्छ ।

**सर्वासामेव जातीनां मृगाणां वनचारिणाम् ।**
**अहोरात्रोषितस्तिष्ठेज्जपन् वै जातवेदसम् ॥१४६॥**
वनमा विचरण गर्ने सबैप्रकारका मृगको हत्यामा जातवेदस

मन्त्र जप गर्दै एक दिनरात उपवास बस्नू ।

**हंसं काकं वलाकाञ्च बर्हिकारण्डवानपि ।**
**सारसञ्चासभासौ च हत्वा त्रिदिवसं क्षिपेत् ॥१४७॥**

हाँस, काग, बकुल्ला, मयुर, पानीहाँस, सारस, नीलकण्ठ र गिद्ध मारे तीन दिन बार्नू ।

**चक्रवाकं तथा क्रौञ्चं सारिकाशुकतित्तिरीम् ।**
**श्येनगृघ्रानुलूकांश्च पारावतमथापि वा ॥१४८॥**
**टिट्टिभं जालपादञ्च कोकिलं कुक्कुटं तथा ।**
**एषां वधे नरः कुर्याद् दिनमेकमभोजनम् ॥१४९॥**

चखेवा, कर्‍याङकुरुङ, मैना, सुँगा, तित्रा, बाज, गिद्ध, उल्लु, परेवा तथा हुटिट्याउँ,
जालपाद, कोइली र कुखुरा हत्या हुन गए मानिसले एक दिन भोजन नगर्नू ।

**पूर्वोक्तानां तु सर्वेषां हंसादीनामशेषतः ।**
**अहोरात्रोषितस्तिष्ठेज्जपन् वै जातवेदसम् ॥१५०॥**

माथि बताइएका सबै र हाँस आदिको (हत्या हुँदा)
जातवेदस् मन्त्र जप्दै एक दिनरात उपवास बस्नू ।

**मण्डूकांश्चैव हत्वा च सर्पमार्ज्जारमूषकम् ।**
**त्रिरात्रोपोषिततिष्ठेत् कुर्य्याद् ब्राह्मणभोजनम् ॥१५१॥**

भ्यागुतो, सर्प, बिरालो र मुसा मारे तीन रात उपवास बसी ब्राह्मणलाई भोजन गराउनू ।

**अनस्थीन् ब्राह्मणो हत्वा प्राणायामेन शुध्यति ।**
**अस्थिमतो वधे विप्रः किञ्चिद्दद्याद्विचक्षणः ॥१५२॥**

हाड नहुने जीव मारे ब्राह्मण प्राणायामले नै शुद्ध हुन्छ भने हाड भएका साना
जीव मारे बुद्धिमान ब्राह्मणले केही दान गर्नू ।

**चाण्डालीं यो द्विजो गच्छेत् कथञ्चित् काममोहितः ।**

**त्रिभिः कृच्छ्रैर्विशुद्ध्येत प्राजापत्यानुपूर्वकैः ॥१५३॥**

वासनाले मोहित भई जो द्विज चाण्डाल्नी गमन गर्दछ उसले प्राजापत्य
व्रत गरी तीन वटा कृच्छ्र व्रत गर्नू, शुद्ध हुन्छ ।

**पुंश्चलीगमनं कृत्वा कामतोऽकामतोऽपि वा ।**
**कृच्छ्रचान्द्रायणे तस्य पावने परमे स्मृते ॥१५४॥**

चाहेर वा नचाहिकन व्यभिचारिणीलाई गमन गर्नेलाई
दुईवटा कृच्छ्र चान्द्रायणव्रत परम पवित्र मानिएको छ ।

**नटीं शैलूषिकीञ्चैव रजकीं वेणुजीविनीम् ।**
**गत्वा चान्द्रायणं कुर्य्यात्तथा चर्मोपजीविनीम् ॥१५५॥**

नर्तकी, नटी, धोबिनी, बाँसको काम गर्ने तथा छालाको काम गर्ने स्त्रीलाई गमन गरे द्विजले
चान्द्रायण व्रत गर्नू ।

**क्षत्रियामथ वैश्यां वा गच्छेद्यः काममोहितः ।**
**तस्य सान्तपनं कृच्छ्रं भवेत् पापापनोदकम् ॥१५६॥**

कामले मोहित भई छेत्रिनी तथा वैश्यालाई गमन गर्नेलाई
सान्तपन कृच्छ्र व्रत पापबाट छुटाउने हुन्छ ।

**शूद्रीं तु ब्राह्मणो गत्वा मासं मासार्द्धमेव वा ।**
**गोमूत्रयावकाहारो मासार्द्धेन विशुद्ध्यति ॥१५७॥**

बाहुनले एक महिना वा पन्ध्र दिनसम्म शूद्रालाई भोग गरे गहुँत र
जौजन्य पदार्थ खाई पन्ध्र दिनमा शुद्ध हुन्छ ।

**विप्रास्वजनां गत्वा प्राजापत्येन शुध्यति ।**
**स्वजनां तु द्विजो गत्वा प्राजापत्यं समाचरेत् ॥१५८॥**

नातेदार बाहेकका बाहुनी गमन गरेमा वा आफ्नै नातेदार
बाहुनी गमन गरेमा द्विजले प्राजापत्य व्रत गर्नू ।

**क्षत्रियां क्षत्रियो गत्वा तदेव व्रतमाचरेत् ।**
**नरो गोगमनं कृत्वा कुर्य्याच्चान्द्रायणं व्रतम् ॥१५९॥**

छेत्रीले छेत्रिनी गमन गरे त्यही (प्राजापत्य) व्रत गर्नू । मानिसले
गाई गमन गरेमा चान्द्रायण व्रत गर्नू ।

**मातुलानीं तथा श्वश्रूं सुतां वै मातुलस्य च ।**
**एता गत्वा स्त्रियो मोहात् पराकेण विशुध्यति ॥१६०॥**

माइजू, सासु तथा मामाका छोरीलाई अनजानमा गमन गरे पराकव्रतले शुद्ध हुन्छ ।

**गुरोर्दुहितरं गत्वा स्वसारं पितुरेव च ।**
**तस्या दुहितरश्चैव चरेच्चान्द्रायणं व्रतम् ॥१६१॥**

गुरुपुत्री, फुपू तथा फुपूकी छोरी गमन गरेमा पनि चान्द्रायण व्रत गर्नू ।

**पितृव्यदारगमने भ्रातुर्भार्य्यागमे तथा ।**
**गुरुतल्पव्रतं कुर्य्यान् निष्कृतिर्नान्यथा भवेत् ॥१६२॥**

काकी वा ठूली आमा तथा भाई बुहारी गमन गरे
गुरुपत्नी गमनको व्रत गर्नू अन्यथा शुद्ध हुँदैन ।

**पितृदाराः समारुह्य मातृवर्जं नराधमः ।**
**भगिनीं मातुराप्तां च स्वसारं चान्यमातृजाम् ॥१६३॥**
**एतास्त्रियः स्त्रियो गत्वा तप्तकृच्छ्रं समाचरेत् ।**
**कुमारीगमने चैव व्रतमेतत् समाचरेत् ॥१६४॥**

सौतेनी आमा, आमाकी बहिनी र सौतेनी आमाकी बहिनी : यी तीन स्त्री गमन गर्ने
नराधमले तप्तकृच्छ्र व्रत गर्नू । कुमारी गमन गर्नेले पनि यही व्रत गर्नू ।

**पशु वेश्याभिगमने प्राजापत्यं विधीयते ।**
**सखिभार्य्यां समारुह्य श्वश्रूं वा श्यालिकां तथा ॥१६५॥**

पशु र वेश्या तथा मित्रपत्नी, सासु र साली गमन गरे शुद्ध हुन प्राजापत्यको विधान बताइन्छ ।

**मातरं योऽधिगच्छेच्च स्वसारं पुरुषाधमः ।**
**न तस्य निष्कृतिर्दद्यात् स्वां चैव तनूजां तथा ॥१६६॥**

जो निच मानिस माता, दिदीबहिनी तथा आफ्नै छोरी गमन
गर्दछ उसका लागि प्रायश्चितको विधान छैन ।

**नियमस्थां व्रतस्थाञ्च योभिगच्छेत् स्त्रियं द्विजः ।**
**स कुर्य्यात् प्राकृतं कृच्छ्रं धेनुं दद्यात् पयस्विनीम् ॥१६७॥**

नियममा रहेकी र व्रतबसेकी स्त्री गमन गर्ने मानिसले
प्राकृत कृच्छ्र व्रत बसी लैनू गाई दान गर्नू ।

**रजस्वलाञ्च यो गच्छेद् गर्भिणीं पतितां तथा ।**
**तस्य पापविशुद्ध्यर्थमतिकृच्छ्रं विधीयते ॥१६८॥**

परसरेकी, गर्भिणी र पतिता स्त्री गमन गर्ने मानिसलाई
शुद्धताका लागि अतिकृच्छ्र व्रतको विधान छ ।

**वैश्यजां ब्राह्मणो गत्वा कृच्छ्रमेकं समाचरेत् ।**
**एवं शुद्धिःसमाख्याता संवर्त्तस्य वचो यथा ॥१६९॥**

वैश्या गमन गर्ने बाहुनले एक कृच्छ्र व्रत गर्नु शुद्ध हुन्छ भनी संवर्त्तले भनेका छन् ।

**कथञ्चिद् ब्राह्मणीं गत्वा क्षत्रिया वैश्य एव वा ।**
**गोमूत्रयावकाहारो मासेनैकेन शुध्यति ॥१७०॥**

केहीगरी वैश्य र क्षत्रियले बाहुनी गमन गरे भने गहुँत र
जौले बनेका कुरा खाएर महिना दिनमा शुद्ध हुन्छन् ।

**शूद्रस्तु ब्राह्मणीं गच्छेत् कदाचित् काममोहितः ।**
**गोमूत्रयावकाहारो मासेनैकेन शुध्यति ॥१७१॥**
केहीगरी कामपिडीत शुद्रले बाहुनी गमन गरेमा गहुँत र जौले

बनेका कुरा खाएर महिना दिनमा शुद्ध हुन्छ ।

**ब्राह्मणीं शूद्रसम्पर्के कदाचित् समुपागते ।**
**कृच्छ्रं चान्द्रायणं तस्याःपावनं परमं स्मृतम् ॥१७२॥**

शूद्रका साथ संसर्ग हुन गएकी बाहुनीका लागि कृच्छ्र
चान्द्रायण व्रत परम पवित्र गर्ने भनी बताइएको छ ।

**चाण्डालं पुल्कसञ्चैव श्वपाकं पतितं तथा ।**
**एतान् श्रेष्ठस्त्रियो गत्वा कुर्य्युश्चान्द्रायणत्रयम् ॥१७३॥**

चाण्डाल, पुक्कस, श्वपच र पतितका साथ सहवास
गर्ने कुलीन स्त्रीले तीन चान्द्रायण व्रत गर्नू ।

**अतः परञ्च दुष्टानां निष्कृतिं श्रोतुमर्हथ ।**
**सन्न्यस्य दुर्म्मतिः कश्चिदपत्यार्थं स्त्रियं व्रजेत् ॥१७४॥**
**स कुर्य्यात् कृच्छ्रमश्रान्तःषण्मासं तदनन्तरम् ।**
**विषाग्निश्यामशवलास्तेषामेवं विनिर्द्दिशेत् ॥१७५॥**

यस पछि अतिदुष्टका प्रायश्चित तिमि सुन । कुनै दुर्वुद्धि भएको सन्यासी सन्तानका खातिर स्त्रिगमन गर्दछ भने उसले छ महिना निरन्तर कृच्छ्र व्रत गर्नू । विष र अग्निका कारण जो काला र दागी हुन्छन् तिनलाई पनि यही व्रत बस्न निर्देश गर्नू ।

**स्त्रीणाञ्च तथाचरणे गर्ह्याभिगमनेषु च ।**
**पतनेषु तथैतेषु प्रायश्चित्तविधिः स्मृतः ॥१७६॥**
**नृणां विप्रतिपत्तौ च पावनः प्रेत्य चेह च ॥१७७॥**

यसरी यस्तै आचरण गर्ने निन्दनीय स्त्रीसंभोगमा तथा पतनमा पनि प्रायश्चितको यही विधि देखिएको छ । मानवको विपदमा यसलोक र परलोकमा (प्रायश्चित) यसले पवित्र पार्दछ ।

**गोविप्रप्रहते चैव तथा चैवात्मघातिनि ।**
**नाश्रुप्रपातनं कार्य्यं सद्भिःश्रेयोऽनुकाङ्क्षिभिः ॥१७८॥**

कल्याण चाहने भएका सज्जनले गाई र ब्राह्मणद्वारा मारिने तथा
आत्महत्या गर्नेहरुका लागि आँशु नबहाउनू ।

**एषामन्यतमं प्रेतं यो वहेत दहेत वा ।**
**तथोदकक्रियां कृत्वा चरेच्चान्द्रायणव्रतम् ॥१७९॥**

आत्महत्या गर्नेको, गाई-साँढेबाट र ब्राह्मणद्वारा मारिनेको लाश जसले बोक्दछ वा
जलाउँछ उसले मृतकका नाममा जलाञ्जली दिई चान्द्रायण व्रत गर्नू ।

**तच्छवं केवलं स्पृष्ट्वा अश्रु नो पातितं यदि ।**
**पूर्वकेष्वप्यकारी चेदेकाहं क्षपणं तथा ॥१८०॥**

यदि लाश छोई आँशु नबहाएको र माथि बताइएको प्रायश्चित पनि गरेको छैन
भने त एक दिनको आशौच बार्नु पर्दछ ।

**महापातकिनाञ्चैव तथा चैवात्मघातिनाम् ।**
**उदकं पिण्डदानञ्च श्राद्धं चैव तु यत्कृतम् ॥**
**नोपतिष्ठति तत्सर्वं राक्षसैर्विप्रलुप्यते ॥१८१॥**

महापापीहरुको र आत्महत्या गर्नेहरुको जुन जलदान, पिण्डदान वा श्राद्ध गरिन्छ,
त्यो सम्पूर्ण कुरा उसलाई पुग्दैन राक्षसहरुद्वारा खोसिन्छ ।

**चाण्डालैस्तु हता ये तु द्विजा दंष्ट्रिसरीसृपैः ।**
**श्राद्धमेषां न कर्त्तव्यं ब्रह्मदण्डहताश्च ये ॥१८२॥**

चाण्डाल, दाऱ्हा भएका जनावर, सर्प आदि सरीसृप र
ब्राह्मणको श्रापले मारिएकाहरुको श्राद्ध नगर्नू ।

**कृत्वा मूत्रं पुरीषं वा भुक्तोच्छिष्टस्तथा द्विजः ।**
**श्वादिस्पृष्टो जपेद्देव्याः सहस्रं स्नानपूर्वकम् ॥१८३॥**

मलमूत्र त्यागेर तथा जुठो खाए पछि तथा कुकुर आदिले छोइए
द्विजले नुहाई एक हजार गायत्री जप्नू ।

**चाण्डालं पतितं स्पृष्ट्वा शवमन्त्यजमेव च ।**
**उदक्यां सूतिकां नारीं सवासाः स्नानमाचरेत् ॥१८४॥**

चाण्डाल, पतित, लाश, अन्त्यज, रजस्वला र सुत्केरीलाई छोए सवस्त्र स्नान गर्नू ।

**स्पृष्टेन संस्पृशेद्यस्तु स्नानं तेन विधीयते ।**
**ऊद्ध्र्वमाचमनं प्रोक्तं द्रव्याणां प्रोक्षणं तथा ॥१८५॥**

रजस्वला वा यिनलाई छुनेलाई छोए नुहाउने विधान छ र त्यसपछि
आचमन र लुगा आदिमा जल छर्कने भनिएको छ ।

**चाण्डालाद्यैस्तु संस्पृष्ट उच्छिष्टश्च द्विजोत्तमः ।**
**गोमूत्रयावकाहारः त्रिरात्रेण विशुध्यति ॥१८६॥**

चाण्डाल आदिले र जुठो मुख हुनेले छोइएको उत्तम द्विज गहुँत र
जौले बनेका पदार्थ खाई तीन रातमा शुद्ध हुन्छ ।

**शुना पुष्पवती स्पृष्टा पुष्पवत्यान्यया तथा ।**
**शेषान्यहान्युपवसेत् स्नाता शुध्येद् घृताशना ॥१८७॥**

कुकुर वा अन्य रजस्वलाद्वारा छोइएकी रजस्वला, चोखिन बाँकी दिन उपवास
बसी घिउ खाएर स्नान गरेपछि शुद्ध हुन्छे ।

**चाण्डालभाण्डसंस्पृष्टं पीत्वा कूपगतं जलम् ।**
**गोमूत्रयावकाहारस्त्रिरात्रेण विशुध्यति ॥१८८॥**

चाण्डालका भाँडाले छोइएको कुवा भित्रको पानी पिए
गहुँत र जौ खाएर तीन रातमा शुद्ध हुन्छ ।

**अन्त्यजैः स्वीकृते तीर्थे तडागेषु नदीषु च ।**
**शुध्यते पञ्चगव्येन पीत्वा तोयमकामतः ॥१८९॥**

शूद्रद्वारा प्रयोग गरिने नदी र तलाउका घाटमा थाहा

नपाएर पानी पिएमा पञ्चगव्यले शुद्ध हुन्छ ।

**सुराघट प्रपातोयं पीत्वा नासा जलं तथा ।**
**अहोरात्रोषितो भूत्वा पञ्चगव्यं पिबेद् द्विजः ॥१९०॥**

सुरा हालेको भाँडाको पानी र झरनाको पानी तथा नाकले पानी पिएमा
एक रातदिन उपवास बसी द्विजले पञ्चगव्य पिउनू ।

**कूपे विण्मूत्रसंस्पृष्टे प्राश्य चापो द्विजातयः ।**
**त्रिरात्रेणैव शुध्यन्ति कुम्भे सान्तपनं स्मृतम् ॥१९१॥**

मलमूत्र परेको कुवाको जल पिउने द्विज तीन रातमा र मलमूत्र परेको भाँडाको
पानी पिए सान्तपन व्रत शुद्धिको बाटो बताइएको छ ।

**वापीकूपतडागानां दूषितानां विशोधनम् ।**
**अपां घटशतोद्धारः पञ्चगव्यञ्च निक्षिपेत् ॥१९२॥**

मलमूत्र परी पँधेरो, कुवा र तलाउको जल दूषित भए शुद्ध पार्न
सय गाग्रो पानी बाहिर निकाली पञ्चगव्य हाल्नू ।

**स्त्रीक्षीरमाविकं पीत्वा सन्धिन्याश्चैव गोः पयः ।**
**तस्य शुद्धिस्त्रिरात्रेण द्विजानाञ्चैव भक्षणे ॥१९३॥**

आईमाईको, भेडीको र गर्भिणी गाईको दूध पिएमा तीन रातको व्रत र
ब्राह्मण भोजनले त्यसको शुद्धि हुन्छ ।

**विण्मूत्रभक्षणे चैव प्राजापत्यं समाचरेत् ।**
**श्वकाकोच्छिष्टगोच्छिष्टभक्षणे तु त्र्यहं द्विजः ॥१९४॥**

मलमूत्र खाइए प्राजापत्य व्रत गर्नू । द्विजले कुकुर, कौवा र
गाईको जुठो खाए तीन दिन प्राजापत्य व्रत बस्नू ।

**विडालमूषकोच्छिष्टे पञ्चगव्यं पिबेद् द्विजः ।**
**शूद्रोच्छिष्टं तथा भुक्त्वा त्रिरात्रेणैव शुध्यति ॥१९५॥**

बिरालो र मूसाको जुठो खाए पञ्चगव्य खानु । शूद्रको जुठो
खाएमा तीन रातको व्रतले मात्रै शुद्ध हुन्छ ।

**पलाण्डुलशुनं जग्ध्वा तथैव ग्रामकुक्कुटम् ।**
**छत्राकं विड्वराहञ्च चरेच्चान्द्रायणं द्विजः ॥१९६॥**

प्याज, लसुन, कुखुरो, च्याउ र सुँगुर खाने द्विजले चान्द्रायण व्रतको पालना गर्नू ।

**श्वविडालखरोष्ट्राणां कपेर्गोमायुकाकयोः ।**
**प्राश्य मूत्रं पुरीषं वा चरेच्चान्द्रायणव्रतम् ॥१९७॥**

कुकुर, बिरालो, गधा, ऊँट, बाँदर, स्याल र कागको मलमूत्र
खाए चान्द्रायण व्रतको पालना गर्नू ।

**अन्नं पर्युषितं भुक्त्वा केशकीटैरुपद्रुतम् ।**
**पतितैः प्रेक्षितं वापि पञ्चगव्यं पिबेद् द्विजः ॥१९८॥**

बासी अन्न एवं रौँ र कीरा परेको अन्न वा नीचले देखेको अन्न खाए द्विजले पञ्चगव्य खानू ।

**अन्त्यजाभाजने भुक्त्वा ह्युदक्याभाजने तथा ।**
**गोमूत्रयावकाहारो मासार्द्धेन विशुद्ध्यति ॥१९९॥**

निम्न जातको वा रजस्वलाको भाँडामा खाना खाए गहुँत र
जौले बनेका कुरा खाएर पन्ध्र दिनमा शुद्ध हुन्छ ।

**गोमांसं मानुषञ्चैव शुनो हस्तात् समाहृतम् ।**
**अभक्ष्यमेतत् सर्वन्तु भुक्त्वा चान्द्रायणं चरेत् ॥२००॥**

गाई वा मानिसको मासु तथा कुकुरको हातबाट लिइएको (छोएको)
सबै कुरा अभक्ष्य हुन्छ, खाए चान्द्रायण व्रत गर्नू ।

**चाण्डाले सङ्करे विप्रः श्वपाके पुल्कसेऽपि वा ।**

**गोमूत्रयावकाहारो मासार्द्धेन विशुध्यति ॥२०१॥**

चाण्डाल, वर्णसङ्कर, श्वपाक तथा पुक्कसका साथ खाने ब्राह्मण गहुँत र जौको खाना खाएर पन्ध्र दिनमा शुद्ध हुन्छ ।

**पतितेन तु सम्पर्कं मासं मासार्द्धमेव वा ।**
**गोमूत्रयावकाहारो मासार्द्धेन विशुध्यति ॥२०२॥**

पतितका साथ एक महिना वा पन्ध्र दिन सम्पर्क गर्नेले गहुँत र जौको खाना खाएर पन्ध्र दिनमा शुद्ध हुन्छ ।

**पतिताद् द्रव्यमादत्ते भुङ्क्ते वा ब्राह्मणो यदि ।**
**कृत्वा तस्य समुत्सर्गमतिकृच्छ्रं चरेद् द्विजः ॥२०३॥**

पतितका साथ द्रव्य लेनदेन वा उपभोग गर्ने बाहुनले त्यो लेनदेन गरिएको कुरा त्यागी अतिकृच्छ्र व्रत गर्नू ।

**यत्र यत्र च सङ्कीर्णमात्मानं मन्यते द्विजः ।**
**तत्र तत्र तिलैर्होमो गायत्र्या प्रत्यहं द्विजः ॥२०४॥**

जहाँजहाँ द्विजले आफूलाई अपवित्र सम्झन्छ, त्यहाँत्यहाँ उसले प्रतिदिन तिल र गायत्रीले होम गर्नू ।

**एष एव मया प्रोक्तः प्रायश्चित्तविधिः शुभः ।**
**अनादिष्टेषु पापेषु प्रायश्चित्तं न चोच्यते ॥२०५॥**

यो शुभ प्रायश्चितको विधि मैले बताएँ । शास्त्रले निर्देश नगरेका कुराको प्रायश्चित भनिएको छैन ।

**दानैर्होमैर्जपैर्नित्यं प्राणायामैर्द्विजोत्तमः ।**
**पातकेभ्यः प्रमुच्येत वेदाभ्यासान्न संशयः ॥२०६॥**

नित्य दान, होम, जप र प्राणायामले तथा वेदाभ्यासले ब्राह्मण पापमुक्त हुन्छ । यसमा शङ्का छैन ।

**सुवर्णदानं गोदानं भूमिदानं तथैव च ।**
**नाशयन्त्याशु पापानि ह्यन्यजन्मकृतान्यपि ॥२०७॥**

सुन दान, गाई दान र भूमि दानले अन्य जन्ममा गरिएका पाप पनि चाँडै नष्ट गरिदिन्छ ।

**तिलं धेनुञ्च यो दद्यात् संयताय द्विजातये ।**
**ब्रह्महत्यादिभिः पापैर्मुच्यते नात्र संशयः ॥२०८॥**

जो मानिस संयम अपनाउने बाहुनलाई तिल र गाई दान गर्दछ,
उ ब्रह्महत्या आदि पापबाट मुक्त हुन्छ ।

**माघमासे तु संप्राप्ते पौर्णमास्यामुपोषितः ।**
**ब्राह्मणेभ्यस्तिलान् दत्त्वा सर्वपापैः प्रमुच्यते ॥२०९॥**

माघ महिना आएपछि पूर्णिमाका दिन उपवास बसी ब्राह्मणलाई
तिल दान गरे सबै पापबाट मुक्ति मिल्दछ ।

**उपवासी नरो भूत्वा पौर्णमास्यां तु कार्त्तिके ।**
**हिरण्यं वस्त्रमन्नं वा दत्त्वा तरति दुष्कृतम् ॥२१०॥**

कार्तिक महिनामा पूर्णिमाको दिन उपवास बसी सुन, वस्त्र र अन्न दान
गर्ने मानिस दुष्कर्मबाट तर्दछ ।

**अयने विषुवे चैव व्यतीपाते दिनक्षये ।**
**चन्द्रसूर्यग्रहे चैव दत्ते भवति चाक्षयम् ॥२११॥**

अयनमा, तुला र मेष संक्रान्तिमा, विपतमा, साँझमा तथा
चन्द्रसूर्य ग्रहणमा दिइएको दान अक्षय हुन्छ ।

**अमावास्या द्वादशी च संक्रान्तिश्च विशेषतः ।**
**एताः प्रशस्तास्तिथयो भानुवारस्तथैव च ॥२१२॥**

दान दिनको लागि औंसी, द्वादशी र विशेष गरी
संक्रान्तिको दिन तथा आईतबार पनि उत्तम हुन्छ ।

**अत्र स्नानं जपो होमो ब्राह्मणानाञ्च भोजनम् ।**
**उपवासस्तथा दानमेकैकं पावयेन्नरम् ॥२१३॥**

यी दिनमा गरिने स्नान, जप, होम, ब्राह्मणभोजन, उपवास
वा दान हरेक कुराले मानिसलाई पवित्र बनाउँदछ ।

**स्नातः शुचिर्धौतवासाः शुद्धात्मा विजितेन्द्रियः ।**
**सात्त्विकं भावमास्थाय दानं दद्याद्विचक्षणः ॥२१४॥**

नुहाएको, शुद्ध भएको, धोएको लुगा लगाएको, पवित्रात्मा भएको र
इन्द्रियलाई जितेको ज्ञानीले सात्विक भावले दान दिनू ।

**सप्तव्याहृतिभिर्होमो द्विजैः कार्य्यो जितात्मभिः ।**
**उपपातकशुद्ध्यर्थं सहस्रपरिसंख्यया ॥२१५॥**

उपपाप शुद्धताका लागि जितात्मा द्विजले सात व्याहृति (भूः, भुवः, स्वः, महः, जनः,
तपः, सत्यम्) ले हजार पटक होम गर्नू ।

**महापातकसंयुक्तो लक्षहोमं सदा द्विजः ।**
**मुच्यते सर्वपापेभ्यो गायत्र्या चैव पावितः ॥२१६॥**

महापापी द्विजले सधैं एक लाख होम गर्नु । गायत्री मन्त्रले पवित्र
गरिएको उ सबै पापबाट मुक्त हुन्छ ।

**अभ्यसेच्च महापुण्यां गायत्रीं वेदमातरम् ।**
**गत्वारण्ये नदीतीरे सर्वपापविशुद्धये ॥२१७॥**

सबै पापबाट शुद्ध हुन बनमा नदीका किनारामा गएर अती
पवित्र वेद-माता गायत्रीको अभ्यास गर्नू ।

**स्नात्वा आचम्य विधिवत्ततः प्राणान् समापयेत् ।**

**प्राणायामैस्त्रिभिःपूतो गायत्रीन्तु जपेद् द्विजः ॥२१८॥**

विधिपूर्वक नुहाई र आचमन गरेर प्राणलाई स्थिर पार्नू । तीन पटकको प्राणायामले पवित्र भएको द्विज गायत्री जप गरोस् ।

**अक्लिन्नवासाः स्थलगः शुचौ देशे समाहितः ।**
**पवित्रपाणिराचान्तो गायत्र्या जपमाचरेत् ॥२१९॥**

सुकेका लुगा लगाएर, नभिजेको र पवित्र स्थानमा, एकाग्र चित्तले, कुशको पवित्र लगाई आचमन गरेर गायत्री जप गर्नू ।

**ऐहिकामुष्मिकं लोके पापं सर्वं विशेषतः ।**
**पञ्चरात्रेण गायत्रीं जपमानो व्यपोहिति ॥२२०॥**

यसलोक र पूर्वजन्ममा गरिएका सम्पूर्ण पाप यस लोकमा गरिएको गायत्रीको जपले पाँच रातमा नै पूराका पूरा नष्ट हुन्छन् ।

**गायत्र्यास्तु परं नास्ति शोधनं पापकर्मणम् ।**
**महाव्याहृतिसंयुक्तां प्रणवेन च संजपेत् ॥२२१॥**

गायत्री भन्दा ठूलो पापलाई सोस्ने अरु कुरा छैन । यसलाई महाव्याहृति (भूः, भुवः, स्वः) तथा प्रणव (ॐ) सहित जप गर्नू ।

**ब्रह्मचारी निराहारः सर्वभूतहिते रतः ।**
**गायत्र्या लक्षजप्येन सर्वपापैः प्रमुच्यते ॥२२२॥**

ब्रह्मचर्य व्रतमा रहेको व्यक्तिले निराहार भएर सर्वप्राणीको कल्याणमा लागी एक लाख गायत्री जप गरेमा सबै पापबाट मुक्त हुन्छ ।

**अयाज्ययाजनं कृत्वा भुक्त्वा चान्नं विगर्हितम् ।**
**गायत्र्यष्टसहस्रन्तु जप्यं कृत्वा विमुच्यते ॥२२३॥**

अयोग्यको यज्ञ गराएर वा निन्दितको अन्न खाएर पाप कमाएकाहरु आठ हजार गायत्री जप गरेर शुद्ध हुन्छन् ।

**अहन्यहनि योऽधीते गायत्रीं वै द्विजोत्तमः ।**
**मासेन मुच्यते पापादुरगः कञ्चुकाद्यथा ॥२२४॥**

जो उत्तम द्विज प्रतिदिन गायत्री पाठ गर्दछ, उ महिना भरको
पापबाट काँचुलीबाट सर्प मुक्त भएझैं मुक्त हुन्छ ।

**गायत्रीं यः सदा विप्रो जपते नियतः शुचिः ।**
**स याति परमं स्थानं वायुभूतः खमूर्त्तिमान् ॥२२५॥**

जो बाहुन इन्द्रियलाई वशमा पारेर र पवित्र भई गायत्रीको जप गर्दछ उ
आकाश स्वरुपी र वायु बनेर परमस्थानमा प्राप्त हुन्छ ।

**प्रणवेन तु संयुक्ता व्याहृतीः सप्त नित्यशः ।**
**गायत्रीं शिरसा सार्द्धं मनसा त्रिःपठेद् द्विजः ॥२२६॥**

प्रणवले युक्त सात व्याहृति तथा गायत्रीलाई शिरोमन्त्र सहित
द्विजले मनै देखि तीन चोटी पाठ गर्नू ।

**निगृह्य चात्मनः प्राणान् प्राणायामो विधीयते ।**
**प्राणायात्रयं कुर्य्यान्नित्यमेव समाहितः ॥२२७॥**

आफ्नो प्राणलाई रोकेर प्राणायाम गरिन्छ । नित्य सावधान भएर तीन प्राणायाम गर्नू ।

**मानसं वाचिकं पापं कायेनैव तु यत्कृतम् ।**
**तत्सर्वं नश्यते तूर्णं प्राणायामत्रये कृते ॥२२८॥**

मन, वचन र शरीरले गरिएका जेजति पाप छन् ती सबै तीन
पटक प्राणयाम गर्नाले नष्ट हुन्छन् ।

**ऋग्वेदमभ्यसेद्यस्तु यजुःशाखामथापि वा ।**
**सामानि सरहस्यानि सर्वपापैः प्रमुच्यते ॥२२९॥**

ऋग्वेदको वा यजुर्वेदको कुनै शाखाको वा रहस्य सहित साममन्त्रको अभ्यास गर्ने व्यक्ति सबै पापबाट मुक्त हुन्छ ।

**पावमानीं तथा कौंत्सीं पौरुषं सूक्तमेव च ।**
**जप्त्वा पापैःप्रमुच्येत स पित्र्यं माधुच्छन्दसम् ॥२३०॥**

पावमानी वा कौत्सी ऋचा, पुरुषसूक्त तथा पितृको मन्त्र-मधुछन्दसको जपले पापबाट मुक्त भइन्छ ।

**मण्डलं ब्राह्मणं रुद्रसूक्तोक्ताश्च बृहत्कथाः ।**
**वामदेव्यं बृहत्साम जप्त्वा पापैः प्रमुच्यते ॥२३१॥**

मण्डल, ब्राह्मण, रुद्र-सूक्तमा बताइएका बृहद् कथाहरु तथा वामदेवको बृहत् सामलाई जप गर्नाले सबै पापबाट मुक्त हुन्छ ।

**चान्द्रायणन्तु सर्वेषां पापानां पावनं परम् ।**
**कृत्वा शुद्धिमवाप्नोति परमं स्थानमेव च ॥२३२॥**

सबै पापलाई अति शुद्ध पार्ने भएको चान्द्रायण व्रत गर्नाले चाँडै नै शुद्धता र परमस्थान प्राप्त हुन्छ ।

**धर्मशास्त्रमिदं पुण्यं संवर्त्तेन त भाषितम् ।**
**अधीत्य ब्राह्मणो गच्छेद् ब्रह्मणः सद्म शाश्वतम् ॥२३३॥**

संवर्त्त ऋषिले बताएको यो पवित्र धर्मशास्त्र अध्ययन गरी ब्राह्मण ब्रह्मको कहिल्यै ननासिने लोकलाई प्राप्त गर्दछ ।

॥ इति श्रीसंवर्त्तेनोक्तं धर्मशास्त्रं समाप्तम् ॥
॥ संवर्त्तस्मृतिको मोहन प्रसाद सापकोटाद्धारा गरिएको
नेपाली भावानुवाद समाप्त भएको छ ॥

